MATINA मतिना

# मतिना

स्वलापौ दँ ८ ल्याः १९ सिल्ला नेसं ११३५ Quarterly Magazine Vol.8 Issue 19 February 2015 त्रैमासिक पत्रिका वर्ष ८ अंक १९ फाल्गुण २०७१

Preserving Our Culture & Language



# Barahi:

## THE CARPENTERS OF BUNGADYAḤ

मतिना
MATINA मतिना

**पिकाक** (Publisher)
Ms. Amrita Shrestha
Tel: +(44) 020 8317 9748

**मूपौजवा**: (Chief Editor)
Mr. Sashi Mahaju
Tel: +(44) 020 8317 9748

**पौजवा**: (Editors)
Mr. Rajendra Shakya
Tel: 9849364369

Mr. Ravi Shakya
Tel: 9849087328

**कजी** (Co-ordinator)
Mr. Maheswor Shrestha
Tel: 9851133751

Sales & Marketing
Ms. Rejeena Joshi
Tel: 9841738541
Patan Gate, Lalitpur, Nepal

Mr. Nikesh Pradhan
Tel: 9808397398
Samakhusi, Kathmandu, Nepal

**ज्याकू** (Office)
UK
80 Sandy Hill Road
Woolwich, London, UK, SE18 7AZ
Tel: +(44) 020 8317 9748
Email: info.matina@yahoo.co.uk
Web: www.matina-international.org
Facebook/Twiter: Matina Swalapau

Nepal
Kumaripati, Lalitpur, Nepal
P.O.Box: 14344, Ktm.
Tel: 9851133751
Email: matina-nepal@publicist.com

Design & Print:
The Final Design
Kumaripati, Lalitpur, Nepal
Email: finaldesign@mail.com

# wnM
# Contents

पुस्तक चर्चा

# जान गुआलवेर्तो दा मास्साद्वारा संकलित नेपालभाषा शब्दकोश



**Ravi Shakya**

Ravi Shakya, MA, is a researcher and teacher at Central Department of Nepalbhasa. He has authored two books on local history of Yala (Lalitpur) and Bunga Dyaw. He was decorated with Motilani Sirapaa and Piyush Padak for his outstanding achievement in BA and MA.

"When I entered the Nepal, I found myself very happy, as I have explored a new Europe. (Giuseppe da Ascali, 8 March 1707)"




नेपालभाषामा कोश लेखनको निकै लामो परम्परा रहेको देखिन्छ। संस्कृतका कोशकार अमरसिंहद्वारा रचित *नामलिङ्गानुशासनम्* वा *अमरकोश*को अनुशरण गरी थुप्रै कोशहरू तयार पारिएका थिए। तीमध्ये नेसं ५०१ को *पुत्रपुत्रादिबोधिनी* र नेसं ५०६ को *बालबोधिनीविवृत्ति*लाई प्रमुख मान्न सकिन्छ। *अमरकोश*पछि *धनञ्जयकोश* र *निघण्टु*को नाम लिन सकिन्छ। तर ती सबै कोशहरू संस्कृत परम्परामा लेखिएका थिए । यी कोशहरू वर्णानुक्रमानुसार मिलाएर लेखिएको पाइँदैन । वर्णानुक्रमानुसार व्यवस्थित गरी लेखिएको नेपालभाषाको पहिलो शब्दकोश *नेपालभाषा-इटालियन शब्दकोश* हो जुन इटालीका क्यापुचिन धर्मप्रचारक Jian Gualberto da Massa (जान गुआलवेर्तो दा मास्सा)द्वारा ईसं १७९२ मा लेखिएको थियो । पुस्तक लेखिएको २२२ वर्षपछि ईसं २०१४ मा Facsimile Edition को रूपमा काठमाडौंको 'वज्र बुक्स'बाट यो पुस्तक प्रकाशित भएको छ । हुनत तमोट (१११०: ८१)ले Theodore Riccardi (थियोडोर रिकार्डी) द्वारा यो पुस्तक प्रकाशित हुँदैछ भन्ने विज्ञापन धेरै वर्षअघि नै देखेका थिए । तर विभिन्न कारणले गर्दा प्रकाशन हुनसकेको थिएन। जे होस्, ढिलै भएपनि पुस्तक बजारमा आएको छ । नेपालभाषा वाङमयको अमूल्य निधिको रूपमा रहेको यो पुस्तक प्रकाशनमा आउनु निश्चय नै स्वागतयोग्य कार्य हो । यो शब्दकोश नेपालभाषाको मात्र नभई नेपालकै सबभन्दा पुरानो शब्दकोश हो । नेपालीभाषाको सबभन्दा पुरानो शब्दकोश R. Kilgour, H. C. Duncan र G. P. Pradhan द्वारा लिखित *English Nepali Dictionary* (1923) र Ralph Lilley Turner द्वारा लिखित *A Comparative and Etymological Dictionary of the Nepali Language* (1931) लाई मानिन्छ। नेपालीमा शब्दकोश लेखिनुभन्दा सयौं वर्षअघि जान गुआलवेर्तो द्वारा लेखिएको यस *नेपालभाषा-इटालियन शब्दकोश*को आफ्नै ऐतिहासिक महत्त्व छ।

यस पुस्तकलाई थियोडोर रिकार्डीले विस्तृत परिचयसहित सम्पादन गरेका छन्। अमेरिकी प्राच्यविद् एवं भाषाविद् रिकार्डी नेपालको इतिहास र पुरातत्त्वका ज्ञाता मानिन्छन् ।


रोमको अभिलेखालयमा सुरक्षितपूर्वक राखिएको हस्तलिखित शब्दकोश

उनको योगदानको कदरस्वरूप स्व. राजा वीरेन्द्रबाट ईसं १९९५ मा 'प्रबल गोरखा दक्षिणबाहु' प्रदान गरिएको थियो । ईसं १९९९ मा कोलम्बिया विश्वविद्यालयबाट अवकाश प्राप्त गरिसकेपछि हाल उनी स्वतन्त्र अनुसन्धाताका रूपमा कार्यरत छन् ।

जान गुआलवेर्तो दा मास्सा र उनले लेखेको शब्दकोशबारे चर्चा गर्नुभन्दा पहिले नेपालमा इसाई मिशनरीहरूको पृष्ठभूमिबारे केही प्रकाश पार्नु सान्दर्भिक देखिन्छ । नेपालमा इसाई मिशनरीहरू मल्लकालमा प्रवेश गरेका थिए । मल्लकालमा जति पनि विदेशी मिशनरीहरू आए तिनीहरूको मूल गन्तव्य नेपाल थिएन, तिब्बत थियो । तिब्बत जान नेपालको बाटो भएर जानुपर्ने हुनाले उनीहरू नेपालमा पनि केही समय बिताएर जान्थे । त्यो समयमा घुमन्ते व्यापारीहरूले मध्य एशियाका केही भूभागमा इसाईहरू ज्यादै कष्टपूर्वक जीवनयापन गर्दैछन् भनी यूरोपमा हल्ला फैलाएका थिए । मुसलमान शासकहरूले उत्तर भारतमा हमला गर्दा ती इसाईहरू ज्यान जोगाउन सुदूर हिमालीक्षेत्रतिर भागेका थिए । यूरोपको धार्मिक क्षेत्रमा आध्यात्मिक मार्गदर्शनको अभावमा भट्किरहेका ती इसाईहरूको उद्धार गर्न नैतिक दबाब बढ्न थाल्यो । यूरोपका चर्चका अधिकारीहरूले तिब्बतमा सम्पर्कविहीन भएर रहेका इसाईहरूलाई सम्पर्कमा ल्याउन र त्यहाँ इसाई धर्म प्रचार गर्न टोली खटाउन थाले । यस काममा इटाली अग्रस्थानमा देखापर्छ । टोलीमा समावेश हुने पादरीहरूलाई चिकित्सा, गणित र जनसम्पर्कबारे राम्ररी प्रशिक्षण दिइन्थ्यो ।

नेपाल प्रवेश गर्ने पहिलो यूरोपेली John Cabral थिए । उनी पोर्चुगल निवासी थिए र जेसुइट समूहसँग आवद्ध थिए । उनी ईसं १६२८ को शुरुमा तिब्बतको सिगात्सेबाट बंगाल फर्कंदा नेपाल भएर फर्केका थिए (पेतेक, २०६०: ११) । तर उनले नेपालबारे केही पनि उल्लेख गरेका छैनन् । ईसं १६६१ मा जेसुइट मिशनरीहरू अष्ट्रियाका Father Grueber र बेल्जियमका Albert D'Orville तिब्बतबाट फर्कंदा काठमाडौं आएका थिए । तिनीहरूले काठमाडौंका राजा प्रताप मल्ल



भ्याटिकन मिशनरी प्रदर्शनी हुँदा टाँसिएको लेबल

(ईसं १६४१-१६७४)लाई भेटी एउटा दूरबीन र केही गणितीय सामग्रीहरू पनि उपहार दिएका थिए । काठमाडौंका राजा भाष्कर मल्ल (ईसं १७००-१७२२)को स्वीकृति पाएर ईसं १७१५ मा काठमाडौंमा पहिलो मिशनरी स्टेशन स्थापना गरिएको थियो (वैद्य, १९९२: ८४) । उपत्यकाका मल्ल राजाहरू ती पादरीहरूप्रति उदार भाव राख्थे र सक्दो सहयोग गर्थे। जयप्रकाश मल्ल (ईसं १७३५-१७६८)ले काठमाडौंको वटुटोलमा घर र बगैंचा दिएर मिशन भवन खोल्न दिएका थिए । पाटनका राजा राज्यप्रकाश मल्ल (ईसं १७४५-१७५८)ले टंगल धाराको नजिक एउटा घर र बगैंचा दिई धर्म प्रचार गर्न स्वीकृति दिएका थिए (लेभी, २००५: ७०) । तिब्बतबाट ईसं १७३२ मा पादरीहरूलाई धपाइएपछि तिनीहरूले नेपालमा आफ्नो गतिविधि बढाए र यहाँका तीनै शहरमा पादरीहरू आफ्ना काममा सक्रिय रहे । ती धर्मप्रचारक पादरीहरू राम्रा चिकित्सक पनि थिए । उनीहरू बिरामीहरूको निःशुल्क उपचार गरी आवश्यकता अनुसार सामाजिक कार्य गरी नेवार समाजमा लोकप्रिय भएका थिए ।

ईसं १७६९ सम्म ती विदेशी मिशनरीहरूले निर्वाधरूपमा काम गर्दै रहे । तर ईसं १७६९ मा पृथ्वीनारायण शाहले उपत्यका विजय गरेपछि ती मिशनरीहरू र इसाई धर्म ग्रहण गरेका नेवारहरूलाई देश छोडेर जान बाध्य पारियो । शुरुमा पृथ्वीनारायण शाह विदेशी मिशनरीहरूबाट धेरै प्रभावित भएका थिए । मिशनरीहरूले काठमाडौं उपत्यकामा गरेका सामाजिक कार्यहरूसँग उनी परिचित थिए । त्यसैले नुवाकोट राजधानी छँदा उनले ती मिशनरीहरूलाई त्यहाँ बोलाएका थिए । तर जनशक्तिको अभावले गर्दा तिनीहरू जान सकेका थिएनन् । पछि ती मिशनरीहरूमार्फत् अंग्रेजहरूले काठमाडौंका राजा जयप्रकाश मल्लको पत्र प्राप्त गरी सिन्धुलीगढीमा आक्रमण गर्न आएको रिस पोख्न पृथ्वीनारायण शाहले विदेशी मिशनरीहरू र इसाई नेवारहरूलाई नेपालबाट निष्कासन गरिदिए। ईसं १७६९ को फेब्रुअरी ४ तारिखका दिन


Questo Dizionario è la prima
Scrittura Nivarora di F. Giovenale:
perciò le lettere sono mal formate:
l'Ortografia però la credo giusta se-
condo l'originale del P. Gian Gualberto.
Vi è di più in questo qualche cen-
tina di vocaboli tratti dai libri: tutti
i numeri dell'Abbaco coi nomi dei Mesi
Settimana Zodiaco in fine.
1792

Archivum generale
Missionum

*पुस्तकबारे इटालियन भाषामा लेखिएको टिप्पणी*

Giuseppe da Rovato को नेतृत्वमा ६२ जनाको टोली नेपालबाट निष्कासित भएर भारतको बेतियातिर लागेको थियो । उक्त टोलीमा टोलीनेता Giuseppe da Rovato सहित जम्मा ५ जना मिशनरीहरू र इसाई धर्म ग्रहण गरेका १४ परिवारका ५७ जना नेवार इसाईहरू सम्मिलित थिए । ती ५७ जनामध्ये काठमाडौंबाट ९ परिवारका ३८ जना, ललितपुरबाट ३ परिवारका १३ जना, भक्तपुरबाट २ परिवारका ४ जना थिए भने २ जना अनाथ पनि परेका थिए (वैद्य, १९९२: १००) । ईसं १७१५-१७६९ सम्म ५४ वर्षको प्रयासपछि मिशनरीहरूले उपत्यकामा जम्मा ९७ जनालाई इसाई बनाउन सफल भएका थिए । यो कुरा उनीहरूले रोममा पठाएको प्रतिवेदनमा उल्लेख गरिएको छ (जोन, १९९९: ५७) । तर पृथ्वीनारायण शाहले निष्कासन गर्दाताका भने तीमध्ये ५७ जना मात्र बाँकी रहेका थिए ।

जब नेपालबाट निष्कासित ती इसाईहरू बेतिया पुगे, तब मिशनरीहरूले बंगालको अंग्रेज सरकारबाट 'चुहारी' भन्ने ठाउँमा सनदमार्फत् केही जग्गा प्राप्त गरे । उक्त


Prima lettera dell'Alfabeto Nivarro, che deve pronunciarsi tra l'O e l'A. Così si devono pronunciare tutte le lettere semplici, che portano seco quasi sempre questo O.A.

Espressione negativa

Oh! Ahi! esclamazione.

Debolezza di Corpo, fiacchezza

Debbole, Fiacco

Dipendenza, Soggezione sforzata, Oppressione dell'altrui libertà

Stare soggetto sforzatamente

Chi sta soggetto sforzatamente

Soggettarsi, divenir soggetto

Divenuto soggetto

Chi fa soggetto

Fare soggetto

Chi è fatto soggetto

Schiavo sforzato

Assoggettare, metter soggetto

Pianta spinosa in Nepal

Miserabile, derelitto

Divenir miserabile &c

Voglia di mangiar qualche cosa

Felicità Beatitudine

Divenir felice, beato

Beatificare

Esser felice, beato.

Uomo felice, beato.

Cuocere mattoni

'अ' वर्णका शब्दहरू चढाइएको शब्दकोशको पहिलो पृष्ठ

गाउँ बेतियाबाट ११ किमि उत्तरपट्टि पर्दछ। बेतियाका राजा धुरुप सिंह पनि इसाईहरूप्रति सहानुभूति राख्थे। उक्त सनदमा नेपालबाट आएका इसाईहरू बस्न राजाको किल्लाभित्र ६० बिघा र किल्लाबाहिर २०० बिघा जमीन उपलब्ध गराइएको व्यहोरा उल्लेख गरिएको छ (जोन, १९९९: ३३८) । नेपालबाट गएका ती नेवार इसाईहरूले ईसं १७७० मा एक धर्मशाला, एक गिर्जाघर र इसाईहरूको लागि एक बस्ती नै निर्माण गरे। चुहारी अहिलेसम्म पनि मिशनकै सम्पत्तिको रूपमा कायमै छ र त्यहाँ ठूलो संख्यामा क्याथोलिकहरू बस्छन्। दुई शताब्दीपछि पनि त्यहाँका नेवारहरूले आफ्नो पहिचानलाई ज्यूँदै राखेका छन्। आफूलाई गर्वका साथ 'नेवार' भनी दावी गर्छन् र आफ्नो नामको पछाडि 'भाजु' शब्द जोड्छन्। ईसं १९९१-९२ को तथ्याङ्कमा जनाइए अनुसार चुहारीमा बसोबास गर्ने ८२ परिवारमध्ये ३३ परिवार 'भाजु' थर भएका नेवारहरू छन् (जोन, १९९९: ७१) । नवीन जानकारी अनुसार चुहारीमा बसोबास गर्ने नेवारहरूको जनसंख्या २५० रहेको छ (दुवाल, www. nepalchurch.com/3079/) ।

**जान गुआलवेर्तो दा मास्सा**

उनको को जन्म ईसं १७२९ मा भएको थियो। रकार्डीले आफ्नो भूमिका (पृ. xiii)मा लेखेमुताबिक जान गुआलवेर्तोको धार्मिक नाम Giovanni Gualberto da Massa थियो भने पादरी बन्नुभन्दा पहिले उनको नाम Angelo Nicola Miti थियो। ईसं १७४७ मा यिनले केपुचिनहरूको समूहमा प्रवेश गरी १५ औं अभियानदलमा सामेल भएका थिए। ईसं १७६१ को जुलाइमा यिनी भारतको चन्द्रनगर पुगेका थिए। यिनको पदस्थापना नेपालमा भएको थियो। नेपालबाटै यिनी चुहारीतर्फ लागेका थिए र ईसं १७८० तिर आफ्नो घर इटाली फर्किए। पुनः २४ औं अभियानदलमा सामेल भएर ईसं १७८४ को ११ अगष्टमा यिनी चन्द्रनगर पुगेका थिए। यिनको पदस्थापना चुहारीमा नै भयो र त्यहीं ईसं १७९६ अक्टोबर ३० तारीखका दिन यिनको मृत्यु भयो (पेतेक, २०६०: १६४-६५) । यसप्रकार उनले ईसं १७६१ देखि ईसं १७९६ को अवधिसम्म जम्मा ३५ वर्ष नेवारहरूका माझ बिताएका थिए। पृथ्वीनारायण शाहले इसाईहरूलाई देशनिकाला गर्दा यिनी पनि परेका थिए। अरु सबैलाई जान दिइए पनि गोर्खाली सेनाले उनी र फादर माइकल एन्जेलोलाई पक्रेर राखेका थिए। केही समयपछि मात्र उनीहरू दुबैलाई मुक्त गरिएको थियो (वैद्य, १९९२: ९८) ।

काठमाडौं उपत्यकामा इसाइ धर्म प्रचार गर्न स्थानीय नेवारहरूसँग सम्पर्क गर्न नेपालभाषा जान्नु अनिवार्य थियो। त्यसको लागि मिशनरीहरूलाई नेपालभाषाको शब्दकोश बनाउनु पर्ने आवश्यकता बोध भयो। सर्वप्रथम नेपालभाषा-इटालियन शब्दकोश बनाउने योजना पादरी Francis Horace Penna Billi ले बनाएका थिए। उनले *तिब्बती-इटालियन शब्दकोश* र *इटालियन-तिब्बती शब्दकोश* पनि बनाएका थिए। उनले बोलीचालीको नेपालभाषा पनि सिकेका थिए। तर मिशनमा काम गर्दागर्दै ईसं १७४५ जुलाइ २० मा पाटनमा उनको मृत्यु भयो (लेभी, २००५: ६८) । फ्रान्सिस होरेसको योजनालाई जान गुआलवेर्तोले साकार रूप दिए।

यो मल्लकालको अन्तिम समयतिरको बोलीचालीको नेपालभाषाको शब्दकोश हो । जान गुआलवेर्तोले यो शब्दकोश तयार पार्न ईसं १७६१-६९ सम्म नेपालमा रहँदा शब्द संकलन गरेको हुनुपर्छ। पृथ्वीनारायण शाहले बेतियामा निष्कासन गरेपछि त्यहीँ बसी शब्दकोश सम्बन्धी बाँकी काम ईसं १६९२ मा सम्पन्न गरेको हुनुपर्छ । जान गुआलवेर्तोले लेखिसकेपछि त्यसलाई Giovenale da Nizza (जुभेनाल दा निच्चा)ले सारेर प्रतिलिपि बनाएका थिए । यी दुबै पुस्तक चुहारीस्थित मिशनरी भवनमै संग्रह गरिएका थिए । प्रतिलिपि बनाइसकेपछि जुभेनालले त्यसको एक प्रति रोम र एक प्रति अक्सफोर्ड विश्वविद्यालयमा पठाइदिने कुरा गरेका थिए (पेतेक, २०६०: १२६) । तर रोम र अक्सफोर्डमा त्यसको प्रतिलिपि कहिल्यै पुगेन । ईसं १७९७ मा कलकत्तास्थित हुग्ली नदीमा यिनको लाश फेला परेका थियो । यिनले आत्महत्या गरेको आशंका गरिएको छ (पेतेक, २०६०: १६५) । दुर्भाग्यवश जान गुआलवेर्तोले लेखेको मूलप्रति पाइएको छैन, फादर जुभेनालले सारेको प्रतिलिपि मात्र प्राप्त भएको छ ।

यो शब्दकोशमा प्रचलित नेपाललिपिमा नेपालभाषाको शब्द लेखी इटालियन भाषामा उक्त शब्दको व्याख्या गरिएको छ। यसमा १३ हजार शब्द संकलन गरिएका छन् (तमोट, १११०: ७९) । हस्तलिखित यस शब्दकोशको साइज २०x१४ सेमि. रहेको छ । नेपाली कागजमा कालो मसीबाट लेखिएको छ। पुस्तकका ठाउँठाउँमा छिद्रहरू बनाइएका छन् । यसमा ४९२ सम्म पृष्ठ संख्या उल्लेख गरिएको छ। शुरुका २६ पृष्ठ खाली नै रहेका छन् भने महिना, राशिको नाम लेखिएका ४ पृष्ठमा पृष्ठ संख्या उल्लेख गरिएको छैन । पछिल्ला २० पृष्ठहरू पनि खाली नै छोडिएका छन् । मूल लेखक जान गुआलवेर्तो र प्रतिलिपिकार जुभेनाल दुबैले पुस्तकको नाम दिएका छैनन् ।

चुहारीको मिशन भवनमा सुरक्षितपूर्वक राखिएको यो शब्दकोशमाथि दृष्टि पुऱ्याउने प्रथम व्यक्ति A. Pezzoni (ईसं १७७७-



*शब्दकोशको पृष्ठ संख्या ४९२*

१८४४) थिए । एङ्ग्लिकन चर्चका पुजारी (Vicar) पेज्जोनि तिब्बत-भारत मिशनमा संलग्न थिए । उनले त्यस घरमा जान गुआलवेर्तोद्वारा लिखित शब्दकोश, फादर जुभेनालद्वारा बनाइएको उक्त शब्दकोशको प्रतिलिपि र कुनै अज्ञात लेखकद्वारा तयार पारिएको *इटालियन-हिन्दुस्तानी-नेपालभाषा शब्दकोश* गरी तीनवटा शब्दकोश देखेका थिए (तमोट, १११०: ८०-८१; जोन, १९९९: ३५०) । तर जुभेनालद्वारा बनाइएको प्रतिलिपि शब्दकोश बाहेक अरु दुइवटै शब्दकोश हराइसकेका छन् ।

जुभेनालद्वारा प्रतिलिपि बनाइएको शब्दकोशको महत्त्व बुझेर लाहोरको इसाई क्षेत्र (Diocese of Lahore)मा कार्यरत बेल्जियमका अनुसन्धाता Felix Finck (ईसं १८६८-१९३२)ले ईसं १९२१ मा उक्त पुस्तकलाई लाहोर लगेका थिए (जोन, १९९९: ३५०) । त्यहाँबाट रोमको क्यापुचिन अभिलेखालयमा सुरक्षितपूर्वक राखियो । ईसं १९२५ मा पंजाबमा Vatican Missionary Exhibition हुँदा item no. 380 को रूपमा यो शब्दकोश पनि प्रदर्शनीमा राखिएको थियो । यो शब्दकोशलाई

“मिशनरी इतिहासको अद्वितीय उपलब्धि” र यसका संकलक जान गुआलवेर्तोलाई “तीक्ष्ण बुद्धिका दूरदर्शी व्यक्ति” भनी प्रशंसा गरिएको छ (तमोट, ११११०: ८१) ।

यस शब्दकोशबारे विद्वत् समाजमा प्रचार गर्ने काम इटालीका अनुसन्धाता Luciano Petech ले गरेका थिए । उनको ७ खण्डमा प्रकाशित ग्रन्थ *I Missionari Italiani nel Tibet e nel Nepal* (तिब्बत र नेपालमा इटालियन धर्मप्रचारकहरू) (Roma: Istituto Poligrafico della Stato, 1952-56) को पहिलो खण्डमा यस शब्दकोशबारे विवरण दिइएको छ ।

रोमको अभिलेखालयमा सुरक्षितपूर्वक राखिएको यस शब्दकोशलाई निकै परिश्रमपूर्वक ईसं २०१४ मा प्रकाशन गरिएको छ। पुस्तक लेखिएको मसी बगेर पढ्न कठिन हुने अवस्थामा पुगेको थियो । तर आधुनिक प्रविधि प्रयोग गरी स्क्यानिङ्गद्वारा प्रत्येक पृष्ठलाई सफा गरी बजारमा ल्याइएको छ ।

पुस्तकको मुखपृष्ठमा Henry Ambrose Oldfield द्वारा लेखिएको काष्ठमण्डप बजारको आकर्षक चित्र राखिएको छ । ईसं १८५०-१८६३ सम्म १३ वर्ष नेपालमा बसी चिकित्सकको काम गरेका ओल्डफिल्ड राम्रा कलाकार पनि भएका हुँदा ठाउँठाउँमा गई चित्रहरू बनाउने गर्थे । ईसं १८८० मा दुई भागमा उनको पुस्तक *Sketches From Nipal* छापिएको थियो । ओल्डफिल्डको पुस्तकको पृ. १०६ र १०७ को बीचमा काष्ठमण्डपको उक्त चित्र पनि छापिएको थियो ।

मुखपृष्ठपछि केही ऐतिहासिक चित्रहरू राखिएका छन् । ती चित्रहरूमा तलेजु भवानीको अनुग्रहमा बसेका ललितपुरका राजा श्रीनिवास मल्लको चित्र आकर्षक देखिन्छ । सत्रौं शताब्दीको कुनै हस्तलिखित ग्रन्थको काठको गातामा उक्त चित्र लेखिएको थियो। त्यसपछिका अरु चित्रहरूमा हनुमान्ढोकामा ईसं १६५४ जनवरी १४ मा राखिएको १५ लिपिको जलद्रोणी अभिलेख, जनावरहरूको चित्र लेखिएको हस्तलिखित ग्रन्थको एक पत्र, भक्तपुरको टौमढी टोलमा मनाइने जात्राको चित्र उल्लेखनीय छन् ।



*नेपाल संवत्को तिथि लेखिएको पृष्ठ*

ती चित्रहरूपछि रिकार्डीले एक पृष्ठको भूमिका लेखेका छन् । उक्त भूमिकामा रिकार्डीले यो पुस्तकको प्रकाशनले जान गुआलवेर्तोको नेपालभाषा संरक्षण गर्ने सानो प्रयत्न सफल हुने आशा व्यक्त गरेका छन् । उनले “यो पुस्तक नेपालभाषाको सम्पूर्ण अध्ययन एवं अन्य भाषाहरूसँगको सम्बन्धबारे प्रकाश पार्नेतिर प्रवृत्त छैन, यसबारे नेवार एवं विदेशी विद्वान्हरूबाट विस्तृत अध्ययन हुन बाँकी नै छ” भनी लेखेका छन् ।

भूमिकापछि रिकार्डीले ६ पृष्ठ लामो (पृ. ix-xv) परिचय लेखेका छन् । तर उक्त परिचयमा नयाँ कुराहरू ज्यादै थोरै छन् । धेरैजसो पेतेकले लेखिसकेका कुराहरू नै दोहोऱ्याइएका छन् ।

यस परिचय खण्डपछि पुस्तकको मूल खण्ड शुरु हुन्छ । यस खण्डमा हस्तलिखित




*क्यापुचिन मिशनरीको छाप लगाइएको पृष्ठ*

शब्दकोशको Facsimile हरू छापिएका छन् । सर्वप्रथम पुस्तकलाई कसरी सुरक्षितपूर्वक गाताबन्दी गरेर राखिएको छ भनी देखाइएको छ । त्यसपछि क्यापुचिन मिशनरीको छाप लगाइएको खाली पृष्ठ रहेको छ । मिशनरीको छाप लगाइएको उक्त पष्ठपछि ईसं १९२५ मा Vatican Missionary Exhibition हुँदा टाँसिएको लेबलसहितको पृष्ठ राखिएको छ । शब्दकोशका मूल संकलक जान गुआलवेर्तो र प्रतिलिपिकार जुभेनालले पुस्तकको कुनै नाम दिएका थिएनन् । तर प्रदर्शनीमा राखिँदा यस पुस्तकको नाम *Dizionario Newari-Italiano* (A Newari-Italian Dictionary) दिइएको छ । पुस्तकको नाम लेखिसकेपछि त्यसको तल “पादरी गुआलवेर्तोद्वारा मूलरूपमा संकलित पुस्तकको आधारमा पादरी जुभेनालले बनाएको प्रतिलिपि” भनी लेखिएको छ ।

त्यसपछिको पृष्ठमा पुस्तकबारे इटालियन भाषामा टिप्पणी लेखिएको छ । यो टिप्पणीमा कसको हस्ताक्षर हो भनेर लेखिएको छैन । उक्त टिप्पणीमा लेखिएको छ -

> यो शब्दकोश पादरी जुभेनालको पहिलो लेखाइ हो, यसै कारणले गर्दा लेखाइको संरचना त्यति राम्ररी मिलेको छैन, तर उच्चारण भने ठीकै देखिन्छ, किनभने यो पादरी जान गुआलवेर्तोको मौलिक कार्यअनुरूप नै छ, तर यस किताबमा प्रयोग भइआएका दुई चारसय शब्दहरू बढी छन् र त्यसबाहेक गन्तीको संख्या, महिना, हप्ता र अन्तमा राशिका नामहरू र वर्ष ईसं १७९२ उल्लेख छ । यस पाण्डुलिपिको नक्कल पादरी जुभेनाल दा निच्चाले आफू भारत आइपुग्नेबित्तिकै गरेका थिए । (पेतेक, २०६०: १२५-२६)

यसपछि अकारादिक्रमानुसार शब्दहरू दिइएका छन् । शब्दकोशमा पहिलो प्रविष्टि ‘अ’ वर्णबाट गरिएको छ । यस अन्तर्गत ‘अइ’, ‘अइकल’, ‘अइकलम्ह’ आदि शब्दहरू दिइएका छन् । पुस्तकमा पृष्ठ संख्या उल्लेखित अन्तिम पृष्ठ ४९२ मा ‘क्ष’ वर्णका शब्दहरू राखिएका छन् । यस अन्तर्गत अन्तिम शब्दको रूपमा ‘क्षिण’ दिइएको छ । यसपछिको पृष्ठमा महिना, राशि र बारका नाम दिइएका छन् । यसपछि १ देखि १ करोडसम्मको नेपालभाषाको गन्ती दिइएको छ । करोडको गन्तीपछि पुनः १५० र १५०० को गन्ती थपिएको छ । अन्तिम पृष्ठमा नेपालभाषामा तिथिको नाम दिइएको छ ।

यो शब्दकोश Facsimile Edition मात्र हो । पुस्तकमा प्रयोग गरिएको कागज र छपाइको स्तर उच्चकोटिको छ । भूमिकामा रिकार्डीले उल्लेख गरे जस्तै यस शब्दकोशबारे विस्तृत अध्ययन हुन बाँकी नै छ । प्राचीन नेपालभाषाका विद्वान्हरू र इटालियन भाषाका विद्वान्हरूको संयुक्त प्रयासमा यस शब्दकोशमा रहेका शब्दहरूको गहन अध्ययन गरी सम्पादन गर्ने काम बाँकी नै छ । यस क्षेत्रमा निकट भविष्यमै केही काम हुनेछन् भनी आशा गर्न सकिन्छ । ●

**सन्दर्भ सामग्री**

तमोट, काशीनाथ, नेसं ११११०, ‘नेपालभाषाया दक्वसिबय् न्हापांगु खँग्वःधुकू व उकिया मुंमि’, *कुलां,* १६;९:७९-८२ ।

दुवाल, नरेश, ‘पृथ्वीनारायण शाहले देश निकाला गरेका इसाईहरूको खोजीमा’, www.nepalchurch.com/3079/, Retrieved on 20/02/015

पेतेक, लुच्यानो, विसं २०६०, *तिब्बत र नेपालमा इटालियन धर्मप्रचारकहरू*। अनुवादक : सुरेन्द्र ढकाल । काठमाडौं : नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान । पहिलोपल्ट इटालियन भाषामा ईसं १९५२ मा प्रकाशित ।

लेभी, सिल्भाँ, ईसं २००५, *नेपाल : हिन्दू अधिराज्यको इतिहास,* पहिलो खण्ड । अनुवादक : डिल्लीराज उप्रेती । ललितपुर : हिमाल किताब । पहिलोपल्ट ईसं १९०५ मा फ्रान्सेली भाषामा प्रकाशित ।

John, Jose K., 1999, *Religion and Community: The Bettiah and Ravidasi Christian Communities in Bihar, 1930-1980.* PhD Dissertation Submitted to Jawaharlal Nehru University.

Vaidya, T. R., 1992, *Nepal: A Study of Socio-Economic and Political Changes.* New Delhi: Anmol Publications.